**॥ श्री गणेशाय नमः ॥**

**ॐ**

**श्री परमात्मने नमः**

**॥ अथ बुधस्मृतिः ॥**

**श्रेयोऽभ्युदयसाधनो धर्मः ॥१॥**

पारलौकिक कल्याण तथा इहलौकिक उन्नति सिद्ध गर्ने कर्म "धर्म" भनी चिनिन्छ ।

*नोट : (१) पारलौकिक : परलोकसम्बन्धी वा परलोकमा सुख दिने । (२) इहलौकिक : यो लोक वा यो लोकमा सुख दिने ।*

**गर्भाष्टमे ब्राह्मणो वसन्त आत्मानमुपनयेत् ॥२॥**

ब्राह्मणले गर्भबाट आठौँ वर्षको वसन्त ऋतुमा आफ्नो उपनयन गराउनू ।

**एकादशे क्षत्रियो ग्रीष्मे ॥३॥**

क्षत्रियले एघारौँ वर्षको ग्रिष्म ऋतुमा उपनयन गराउनू ।

**द्वादशे वैश्यो वर्षासु ॥४॥**

वैश्यले बाह्रौँ वर्षमा उपनयन गराउनू ।

**मेखलाजिनकमण्डलूपवीतानि धारयेत् ॥५॥**

(उपनयनमा वटुक वा ब्रह्मचारीले) मेखला, कृष्णाजिन, दण्ड, कमण्डलु र जनै धारण गर्नू ।

*नोट : (१) मेखला : कन्दनी वा कन्धनी । (२) कृष्णाजिन : कृष्णसार मृगको छाला । (३) दण्ड : लौरो ।*

**वेदानधीत्य गुरुशुश्रूषां कुर्वन् दृष्टार्थं तनुयात् ॥६॥**

वेद पढी गुरुको सेवा गर्दै प्रयोजन सिद्ध गर्नू ।

**सावित्रीवेदव्रतिकोपनिषद्गोदानत्रिसुपर्णिकव्रतानि चरेत् ॥७॥**

गायत्री, वेदव्रत, उपनिषद्, गोदान, त्रिसुपर्णिक आदि व्रत गर्नू ।

*नोट : (१) गायत्रीव्रत : शुक्लपक्षको चतुर्दशीतिथिमा सूर्यपूजनका साथ सय पटक, हजार पटक र दशहजार पटक गायत्रीजप गरिने एक व्रत । (२) वेदव्रत : चैत्रमासदेखि ऋग्वेदको पूजा गरी नक्तविधिको आहार र वेदपाठ गरी गरिने चतुर्मूर्तिव्रत । (३) त्रिसुपर्णिक व्रत : "ब्रह्मासेतुमां....." इत्यादि ऋग्यजुर्वेद सम्बन्धी तीन अनुवाक् पढ्ने र व्रत गर्दै तीन अनुवाक्को अध्ययन गर्ने व्रत ।*

## गुरुणानुज्ञातः स्नायात् ॥८॥

वेद पढि सकेपछि गुरुको आज्ञाले (वेद) स्नान (समावर्तन संस्कार) गर्नू ।

## सवर्णां भार्यामुद्वहेत् ॥९॥

(गृहस्थाश्रममा प्रवेश गरी) आफ्नै वर्णकी पत्नीलाई प्राप्त (विवाह) गर्नू ।

## मातृतः पितृतः पञ्चमी सप्तमीं दशमीमन्यगोत्रजां ॥१०॥

माताको कुलमा पाँच र पिताको कुलमा सात तथा यदि अन्य गोत्रमा जन्मेकी भए दशौं पुस्ताभन्दा परकी होस् (त्यस्ती कन्या विवाह गर्नू)।

## ब्राह्मदैवार्षप्राजापत्यगान्धर्वाऽऽसुर पैशाचराक्षसाः ॥११॥

ब्राह्म, दैव, आर्ष, प्राजापत्य, गान्धर्व, आसुर, पैशाच र राक्षस-यी आठ विवाहका विधि हुन् ।

*नोट : मनुस्मृति, अध्याय ३ : (१) ब्राह्म : विद्वान र सदाचारी युवकलाई आदरपूर्वक निमन्त्रणा गरी आफ्नी कन्याको वरको रुपमा स्वीकार्दै वस्त्र-आभूषणले सिँगारिएकी कन्या ससम्मान समर्पित गर्नु ब्राह्म विवाह हो । (२) दैव : यज्ञ गर्दा उपस्थित भएमध्येका असल ऋत्विज्लाई वस्त्र-आभूषणले सिँगारेर आफ्नी कन्या दिने विधिलाई दैव विवाह भनिन्छ । (३) आर्ष : वरपक्षसँग एउटा वा दुईटा गाई वा गोरु लिएर विधि अनुसार आफ्नी कन्या प्रदान गर्नुलाई आर्ष विवाह भनिन्छ । (४) प्राजापत्य : कन्यादान गर्दा 'तिमीहरु दुबैले सँगै रहेर मिलेर धर्म अनुसार आचरण गर्नु' भनी सत्कारपूर्वक कन्यादान गर्ने विधिलाई प्राजापत्य विवाह भनिन्छ । (५) गान्धर्व : केटाकेटीले एक-आपसमा स्वेच्छाले कामाशक्ति र वासनाप्रधान प्रेम सम्बन्ध गाँसी गर्ने विवाह गान्धर्व विवाह हो । (६) आसुर : कन्याले वा कन्यापक्षले वरसँग तिनको गच्छे अनुसार धन लिई कन्याप्रदान गरी गरिने विवाह आसुर विवाह हो । (७) पैशाच : निदाइरहेकी, अर्द्धमूर्छित वा अर्द्धनिद्रामा परेकी कन्यालाई जवर्जस्ती गरी वाध्यताले विवाह गर्नु अत्यन्त अधम पैशाच विधि हो । (८) संरक्षकलाई मारेर, हातगोडामा चोट पुर्याएर, वासस्थान आदि नष्ट गरेर रुँदै गाली गर्दै गरिरहेकी कन्यालाई हरण गरी आफ्नो अधिकारमा लिनु राक्षस विधि हो ।*

## ऋतावुपेयात् ॥१२॥

ऋतुकालमा पत्नीसँग सहवास गर्नू ।

*नोटः (१) आपस्तम्बगृह्यसूत्रम् , तृतीयः पटलः, नवमः खण्डः - परसरेको चौथो र सोऱ्हौं रात तथा यसका बिचका सबै जोर रातहरु उत्तम सन्तान प्राप्तिका लागि ऋतुगमनका रात (ऋतुकाल) हुन्छन् भनिएको छ । (२) व्यासस्मृतिः, द्वितीयोऽध्यायः - रजोदर्शन देखिका सोऱ्ह रात ऋतुका रात ( ऋतुकाल) हुन्छन् ।*

## युग्मासु पुत्रमुत्पादयेत् ॥१३॥

जोर रातमा सहवास गरी छोरा पाउनू ।

## गर्भाधानं पुंसवनं सीमन्तोन्नयनं जातकर्म नामकरणं निष्क्रमणान्नप्राशनचूडाकरणोपनयनं यावदग्न्याधानम् ॥१४॥

गर्भाधान, पुंसवन, सीमन्तोन्नयन, जातकर्म, नामकरण, निष्क्रमण, अन्नप्राशन, चूडाकर्म, उपनयन आदि संस्कार गरी समावर्तन, विवाह आदि पछि अग्निको आधान गर्नू ।

## तस्मिन् गृह्याणि देव-पितृ-मनुष्य-व्रत-यज्ञ-कर्माणि कुर्यात् ॥१५॥

संस्कार पछि आधान गरिएको अग्निमा देवयज्ञ, पितृयज्ञ, नृयज्ञ तथा व्रत, यज्ञ आदि गृह्यकर्महरू गर्नू ।

*नोटः होमलाई देवयज्ञ, पितृको श्राद्धतर्पणलाई पितृयज्ञ र अतिथिको सेवालाई नृ वा मनुष्ययज्ञ भनिन्छ (मनुस्मृति, अध्याय ३) ।*

## अतिथीन् पूजयेत् ॥१६॥

अतिथिको पूजा गर्नू ।

## भृत्यान् बन्धून् पौष्यवर्गांश्च ॥१७॥

आश्रितजन, बन्धुजन तथा पोष्यवर्गको पालनपोषण गर्नू ।

*नोट : (१) स्कन्दपुराण, काशिखण्ड, पूर्वार्द्ध, अध्याय ४० : माता, पिता, गुरु, पत्नी, सन्तान, अन्य आश्रित जन, अभ्यागत, अतिथि र अग्नि : यी नौ पोष्यवर्ग हुन् । (२) गरुडपुराण, अध्याय २०५ : माता, पिता, गुरु, भ्राता, प्रजा, दीन, समाश्रित, अभ्यागत, अतिथि र अग्नि : यी पोष्यवर्ग हुन् ।*

**श्ववायसादिभ्यो भूमौ दत्त्वा ब्राह्मणान् भोजयेत् ॥१८॥**

कुकुर, काग, आदिलाई जमिनमा बलि दिई ब्राह्मणलाई खुवाउनू ।

**पित्रन्वष्टकापार्वणश्राद्धश्रावण्याग्रहायणी चैत्र्याश्वयुजी च पाकयज्ञान् कुर्यात् ॥१९॥**

पितृ, अन्वष्टका, पार्वण श्राद्ध, श्रावणी, आग्रहायणी, चैत्री तथा आश्वयुजी नामका पाकयज्ञहरू गर्नू ।

*नोट : (१) पितृयज्ञ : पितृहरूलाई स्वधा शब्द उच्चारण गरेर गरिने तर्पण एवं श्राद्ध । (२) अन्वष्टका : अग्निहोत्रीबाट पुस, माघ, फागुन र आश्विन कृष्णपक्षको नवमी तिथिहरूमा गरिने अष्टका पछिको श्राद्ध । यसमा पित्रादि तीन, मात्रादि तीन र मातामहादि तीन समेतलाई गरी नौ पिण्डहरू दिइन्छन् । (३) पार्वण : औंसी वा पर्वको दिनमा गरिने श्राद्ध । यो श्राद्धमा पिता, पितामह, प्रपितामह तथा माता, मातामह, प्रमातामह ३-३ जनालाई पिण्ड दिइन्छ । यसमा पर्व भनी चतुर्दशी, अष्टमी, औंसी पूर्णिमा वा संक्रान्तिलाई लिइएको छ, पार्वण श्राद्धका तीन भेद छन् -एकपार्वणक र द्विपार्वणक र त्रिपार्वणक । कसैको मत मातामह र मातामही समेतलाई पार्वणमा पिण्ड दिइने हुँदा पार्वणका चार भेद हुन्छन् भन्ने छ । कुनै सूत्रमा दर्शश्राद्धलाई पनि त्रिपार्वणक वा चतुष्पार्वणक मानिएको छ । (४) श्रावणी श्राद्ध : श्रवणा नक्षत्रले युक्त भएको पूर्णिमा अर्थात् साउनको पूर्णिमामा गरिने श्राद्ध । (५) आग्रहायणी : आग्रहायणी भनेको मंसिर पूर्णिमामा गरिने श्राद्ध हो । (६) चैत्री : चैतको पूर्णिमामा गरिने श्राद्ध । (७) आश्वयुजी : आश्विन पूर्णिमामा गरिने श्राद्ध ।*

**अग्नीनाधायग्निहोत्रं दर्शपौर्णमासौ चातुर्मास्यानि निरूढपशुरनुबन्धसौत्रामणीति हविर्यज्ञान् कुर्यात् ॥२०॥**

अग्निको आधान गरी अग्निहोत्र, दर्श, पौर्णमास, चातुर्मास्य, निरूढपशु, अनुबन्ध तथा सौत्रामिणी जस्ता हविर्यज्ञ गर्नू ।

*नोट : (१) अग्निहोत्र : वैदिक प्रक्रियाअनुसार अग्निस्थापना गरी नियमित रूपले बिहान-बेलुका होम गर्ने क्रिया; त्यस्ता प्रकारले अग्निलाई अखण्ड राख्न गरिने नित्य हवन । (२) दर्श : औंसीका दिन अग्निहोत्रीहरूद्वारा गरिने यज्ञकार्य । (३) पौर्णमास : अग्निहोत्रीहरूद्वारा पूर्णिमाका दिन गरिने एक प्रकारको यज्ञ । (४) चातुर्मास्य : हविर्यज्ञका सात भेदमध्ये चार महिना गरिने पाँचौं यज्ञ । यो यज्ञ आषाढ शुक्ल एकादशी वा पूर्णिमादेखि अथवा श्रावण संक्रान्तिदेखि चार महिनासम्म गरिन्छ । यसका वैश्वदेवीय, वरुण प्रधास, शाकमेघ र शुनासीरीय गरी चार भेद हुन्छन् । (५) निरूढपशु : हविर्यज्ञका सात भेदमध्ये छैटौं यज्ञ । यो प्रतिवर्ष वर्षा ऋतुमा गरिन्छ । यसमा इन्द्र र अग्निको*

*नामबाट हवन हुन्छ । यसलाई पशुयाग पनि भनिन्छ । (६) अनुबन्ध : यज्ञ सकिएपछि यसको फलले कर्तालाई बाँधिरहोस् वा पछ्याइरहोस् भनी गरिने यज्ञविशेष । (७) सौत्रामिणी : एक दिनमा सकिने यज्ञविशेष ।*

**अग्निष्टोमोऽत्यग्निष्टोमः उक्थ्यषोडशीवाजपेयोऽति**
**रात्रोऽप्तोर्याम इति सोमयागाननुतिष्ठेत् ॥२१॥**

अग्निष्टोम, अत्यग्निष्टोम, उक्थ्य, षोडशी, वाजपेय, अतिरात्र तथा अप्तोर्याम जस्ता सोमयागको अनुष्ठान गर्नू ।

*नोट : (१) अग्निष्टोम : अग्निहोत्री ब्राह्मणलाई मात्र स्वर्गप्राप्तिका लागि गर्ने अधिकार भएको र वसन्त ऋतुमा पाँच दिन लगाएर गरिने यज्ञविशेष । जसमा ऋत्विको सङ्ख्या सोह्र हुन्छ तथा सोमरसको पान गरिन्छ । (२) अत्यग्निष्टोम : ज्योतिष्टोम यज्ञको कर्मविशेष । (३) उक्थ्य : सोमसंस्था अन्तर्गतको एक यज्ञ । (४) षोडशी : अग्निष्टोम यज्ञको विधानविशेष । (५) वाजपेय : सोमसंस्था अन्तर्गतका सात श्रौत यज्ञहरूमध्ये पाँचौं यज्ञ, आधिपत्यको कामनाले गरिने यस यज्ञका सत्र दीक्षाहरू हुन्छन् । यो उत्तराफाल्गुनी नक्षत्र भएको पूर्णिमामा आरम्भ गरिन्छ । यो यज्ञ गर्ने राजा सबै पापबाट मुक्त हुन्छन् भनिएको छ । (६) अतिरात्र : सात सोमसंस्थाअन्तर्गतको एक यज्ञ । उक्त सोमसंस्थाअन्तर्गत अग्निष्टोम, अत्यग्निष्टोम , उक्थ्य, षोडशी, वाजपेय, अतिरात्र र आप्तोर्याम नामक सात वैदिक यज्ञहरू पर्दछन् । ज्योतिष्टोम यज्ञको एक ऐच्छिक भाग । एकै रातमा शुरु भएर सकिने यज्ञ । (७) अप्तोर्याम : एक यज्ञविशेष, अग्निष्टोम यज्ञको अन्तिम भाग ।*

**दया सर्वभूतेषु क्षान्तिरनसूया शौचमनायासेन**
**मङ्गलमपकार्पण्यमस्पृहेति कुर्यात् ॥२२॥**

सबै प्राणीमा दया, क्षमा, अनसूया, शौच, बिना आयासबाट मङ्गलकारिता, अदीनता (दानशिलता) र अस्पृहा यी गुण धारण गर्नू ।

*नोट : अत्रिसंहिता : (१) अनसूया : गुणीको गुण नष्ट नगर्नु, अर्काको गुणको प्रशंसा गर्नु र अर्काको दोषको उपहास नगर्नुलाई अनसूया भनी बताइएको छ । (२) अनायास : शरीरलाई पिडा पुर्‍याउने कुनै पनि शुभअशुभ कर्म नगर्नुलाई अनायास भनिन्छ । (३) अस्पृहा : उपलब्ध वस्तुमा सन्तोष लिनु र परस्त्रीको चाहना नगर्नु अस्पृहा हो ।*

**न्यायागतधनेन कर्माणि ॥२३॥**

न्यायले पाएको धनबाट कर्महरु गर्नू ।

**अध्यापनं याजनं प्रतिग्रहः सर्व-क्रय-विक्रय-संविभाग प्रात्यधिगमशिलोञ्छान्नमायाचितकर्षणेत्यादि वृत्तयः ॥२४॥**

पढाउनु, यज्ञ गराउनु, दान लिनु, सबै थरिका खरिदबिक्री, पैतृक धन, शिल र उञ्छले पाएको अन्न, भिक्षा र कृषि आदि ब्राह्मणका वृत्तिका साधन हुन् ।

*नोट : (१) शिल : अनाज काटेपछि खेतमा छुट्न गएको बाला वा अन्नका दाना बटुल्ने काम । (२) उञ्छ : खेतमा बाली काटेपछि छरिएको अन्नको दाना टिप्ने काम ।*

**तदसंभवे क्षत्रियवृत्त्या ॥२५॥**

त्यो सम्भव नभए क्षत्रिय-वृत्ति लिनू ।

**आपत्काले असाधुभ्यः प्रतिगृह्णीयात् ॥२६॥**

आपदमा दुर्जनबाट पनि धन (वा दान) लिनू ।

**वृत्तिसंकरं न कुर्यात् ॥२७॥**

आजिविकाका (वर्णअनुसार तोकिएका) पेसामा सङ्कर (छ्यासमिस) नगर्नू ।

**कर्मवृत्तिसंकरौ रक्षेत् कुलशुद्धयर्थम् ॥२८॥**

कुलको शुद्धताका लागि कर्मसङ्कर र वृत्तिसङ्करबाट बच्नू ।

**कृषिः पाशुपाल्यं वाणिज्यं वैश्यकर्म ॥२९॥**

खेती, पशुपालन र ब्यापार वैश्यका कर्म हुन् ।

**शूद्रस्य विहितं कर्म ब्राह्मणादीनां त्रयाणां भर्तृशुश्रूषानाभिचरस्तस्य गुरुभक्तिः प्रणामश्चेति ॥३०॥**

शूद्रको कर्ममा ब्राह्मण आदि तीन वर्णलाई स्वामीका रुपमा सेवा गर्ने विधान गरिएको छ । उसलाई मन्त्रबाट यज्ञानुष्ठानको अधिकार छैन । उसका लागि गुरुभक्ति र प्रणामको नै विधान छ ।

## कृतकृतस्य वानप्रस्थ्यं ॥३१॥

जो गृहस्थधर्मबाट अघाउँदछ उसले वानप्रस्थी हुनू ।

## विरक्तस्य पारिव्राज्यम् ॥३२॥

विरक्तका लागि सन्यासको विधान छ ।

## स्वधर्मानुष्ठाने वर्णानामाश्रमाणाञ्च हिताकरणे प्रतिषिद्धसेवने यावत्तदकुर्वतः ॥३३॥

आफ्नो धर्मको अनुष्ठान नगर्दा, वर्ण र आश्रमको अहित गर्दा, निषेधित कुरा खाँदा मानिसलाई त्यति नै दोष हुन्छ जति विधान गरिएका कुरा नगर्दा हुन्छ ।

## विहितमकुर्वन्तो राज्ञा कारयितव्याः ॥३४॥

विधान गरिएका कुरा नगर्नेलाई राजाले गर्न लगाउनू ।

## कण्टकान् शोधयेत् ॥३५॥

चोर आदिको निर्मूल पार्नू ।

## व्यवहाराननेकार्थान्निर्णयेत् ॥३६॥

अनेक प्रकारका व्यवहार (विवाद) को निर्णय गर्नू ।

## वलवतश्चैतान् स्वधर्मे स्थापयेत् ॥३७॥

बलवानलाई तिनको धर्ममा स्थापित गर्नू ।

## तेषु परस्वदण्डयान् दण्डं दापयेत् ॥३८॥

तिमध्ये (सबभन्दा बलियालाई) अर्काको धन चोर्नेलाई दण्ड दिन लगाउनू ।

**तथा कुर्वतः कारय तश्चोभयोर्धर्मसिद्धिः ॥३९॥**

यसरी गर्ने र गराउने दुबैलाई धर्म हुन्छ ।

**तस्य धर्मो विनीतोऽव्यसनी ॥४०॥**

नम्र हुनु र व्यसनी नहुनु राजाको धर्म हो ।

**निरूपितमण्डलाध्यक्षः संधिविग्रहासनयानसंश्रयद्वैधीभावात्**
**सामर्थ्यं कारयेत् ॥४१॥**

राज्यमण्डलको अध्यक्ष तोकी उसबाट सन्धि, विग्रह, आसन, यान, संश्रय र द्वैधी भाव-नीतिका यी गुण मार्फत आफ्नो शक्ति बढाउनू ।

**अनिच्छति पलायानमुपरुध्य परदुर्गे गृह्णीयात् ॥४२॥**

शत्रु भाग्न चाहँदैन भने उसलाई उसैको किल्लामा घेरेर समाउनू ।

**मन्त्रौषधिप्रयोगेण निस्सर्गं राज्यं (राष्ट्र) गृह्णीयात् ॥४३॥**

मन्त्र र औषधी प्रयोग गरी नैसर्गिक राज्यलाई पाउनू ।

**गृहीत्वा देवब्राह्मणपूजनम् ॥४४॥**

राज्य पाएपछि देवता र ब्राह्मणको पूजा गर्नू ।

**एवं कुर्वन् दृष्टमदृष्टं च (फलं) लभेतेति ॥४५॥**

यसो गरिरहँदा राजाले दृश्य र अदृश्य दुबै किसिमका फल प्राप्त गर्दछ ।

॥ इति श्रीबुधप्रोक्ता बुधस्मृति समाप्ता ॥

॥ श्रीबुधले बताएको बुधस्मृतिको मोहन प्रसाद सापकोटाद्वारा गरिएको नेपाली भावानुवाद समाप्त भयो ॥



सबैको कल्याण होस् !